राष्ट्रिय दैनिक

# गोल्डेन न्यूज

Golden News National Daily

वर्ष ८ अंक १८९ श्रेणी 'क' २०७३ वैशाख ६ गते सोमबार 18 April 2016 पृष्ठ ४ मूल्य रू. ५/-



## सिद्धबाबाको दोहोरो नागरिकता !

### आयुर्वेद विश्वविद्यालय स्थापना गर्ने भन्दै जडीबुटीको तस्करी गरेको आरोप

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा ५ वैशाख ।**

अहिले संचारमाध्यमहरुमा सिद्धबाबा सर्वत्र छाएका छन् । पोखरास्थित एक घरभित्र ८ दिनसम्म समाधिमा बसेका (बिना अक्सिजन) बसेका भन्दै सिद्धबाबाको चर्चा व्यापक बनेको छ । कतिपय चिकित्सकले ३ मिनेटभन्दा बढी अक्सिजनबिना मान्छे बाँच्नु विज्ञानका लागि नै चुनौति भएको बताइरहेका छन् । बहालवाला मन्त्री, पूर्वमन्त्री, प्रशासक, नेता, सामाजिक कार्यकर्ता, पत्रकार सबै सिद्ध बाबाको पछाडि लागेका छन् । ८ दिनसम्म बिनाअक्सिजन प्लाष्टिकले बेरिएको बन्द बाकसभित्र समाधिलिन व्यक्ति कसरी जिउँदै रह्यो भन्ने जिज्ञासा र कौतुहुलता व्यापक छ । ८ दिनसम्म समाधि बसेर वाही-वाही कमाएका सिद्धबाबाको जयजयकार गर्दै पोखरामा रथारोहण नै गरिएको छ ।

व्यापक चर्चा र भक्तहरुको अपार समर्थन तथा जयजयकार पाइरहेका सिद्धबाबा पूर्वमा गैरकानूनी काममा संलग्न भएपछि कारबाहीमा परिने डरले रातारात पोखरा पुगेका र त्यहाँ आफ्ना कर्तुत लुकाउन समाधिमा बसेर छोप्ने प्रयास गरेका रोचक रहस्य बिजशालाले पत्ता लगाएको छ । सुनसरीको चतरामा बस्दै आएका कृष्णदास महाराज अथवा सिद्धबाबा वा मनलागी आफ्नो नाम आफैं राख्दै हिंड्ने सोलुको जुबुका कृष्णबहादुर गिरी दोहोरो नागरिकता र जडीबुटीको अवैध कारोबारमा संलग्न रहेको संगीन आरोप खेपिरहेका व्यक्ति हुन् ।

पूर्वमा हुँदा 'कृष्णदास महाराज' र पोखरामा पुगेर 'सिद्धबाबा' नामले चर्चा कमाएका गिरीले दोहोरो नागरिकता लिएर अबैध काम गरिरहेको भन्दै चैत अन्तिम साता





स-प्रमाण जिल्ला प्रशासन कार्यालय सुनसरीमा उजुरी नै परेको छ । उजुरी उनकै आफन्तले हालेका स्रोतले जनाएको छ । उनी केही समयअघिदेखि विवादमा तानिएका व्यक्ति हुन् । कृष्णदास भनिने कृष्णबहादुर गिरीले नाम, जन्ममिति र स्थायी बसोबासको विवरण फरक-फरक लेखाई सोलू र सुनसरीबाट दुईवटा नागरिकता लिएर कारोबार गर्ने गरेको प्रमाणित भएपछि जेल सजायमा परिने डरले हतार-हतार पोखरा पुगेर उनले समाधिमा बसी अपार चर्चा कमाई त्यसको आडमा कानूनी कारबाहीबाट बच्ने प्रपञ्च रचेका स्रोतहरुले दाबी गरेका छन् । गिरीले सोलुबाट नाम कृष्णबहादुर गिरी ठेगाना जुबु १ सोलु र जन्म मिति २०३० साल मंसिर १० गते लेखिएको २२२७५९५ नम्बरको नागरिकता लिएका छन भने २०६५ साल पुष १७ गते सुनसरीबाट नाम श्री बैष्णब कृष्णदासका नाममा जन्म ठेगाना जुबू सोलू, स्थायी बसोबास बराहक्षेत्र-१ सुनसरी, जन्म मिति २०३१ साल फागुन १९ गते लेखिएको ०६९००४।१३२८०८ नम्बरको नागरिकता लिएका छन् । दुवै नागरिकतामा जन्मस्थान जुबु सोलू र बुबाको नाम भने छबिलाल गिरी नै लेखिएको छ । नाम र जन्ममिति फरक-फरक छ ।

सुनसरीबाट जारी नागरिकता मा प्रशासकीय अधिकृत वेदनिधि खनाल र सोलुबाट जारी नागरिकतामा भिमसेर रुम्दालीले हस्ताक्षर गरेका छन् । कृष्णदासले दुईवटा नागरिकता मात्र लिएका होइनन्, दुवैबाट बैंक खाता संचालन गरी आर्थिक कारोबार र जग्गा जमिन समेत खरिदबिक्री गरेको पाइएको छ । उनले सुनसरीमा कृष्णबहादुर गिरीका नाममा र देवघाटमा श्री बैष्णब कृष्णदासका नाममा जग्गा जमिन गरिद बिक्री गरेको पाइएको छ । यी लगायतका काम थाहा पाएका परिवारका सदस्यलाई उनले यस्तो कुरा बाहिर लगे मारिदिने सम्मको धम्की दिने गरेका छन् । आफूलाई साधु र सन्तको उपमा दिने सिद्धबाबाले गोप्य रुपमा जग्गाको कारोबार गर्ने गरेका, आयुर्वेद विश्वविद्यालय स्थापना गर्ने भन्दै जडीबुटीको तस्करी गर्ने गरेको संगीन आरोप समेत लागेको छ ।

कृष्णदासले फरक-फरक विवरण राखी दोहोरो नागरिकता लिएर दुरुपयोग गर्ने मात्र होइन नाडी छामेर नै बिरामी पत्ता लगाउने भन्दै चतरामा बसेर अबैध किसिमले जडिबुटीको कारोबार समेत गरिरहेका स्थानीयको दाबी छ । अझ आश्चर्यको कुरा त गैरकानूनी ढंगले दोहोरो नागरिकता लिने उनै ढोंगी बाबालाई राज्यको तर्फबाट एकजना प्रहरी हवल्दार पनि उपलब्ध गराएको छ । सुरक्षाकर्मीलाई सँगै गाडीमा राखेपछि र गेरु बस्त्र लगाएको साधु अगाडि बसेपछि उनको गाडी कसैले चेकजाँच गर्दैन । उनी त्यही गाडीमार्फत अबैध कारोबार समेत गर्छन । देश र जनताको सेवा गर्छु भनेर सेवापीठ खोलेर बसेका साधुले सस्तो पर्ने भनेर भारतीय नागरिकले दान दियो भनेर भारतीय नं. M L 4B 7661 प्लेटको सुविधासम्पन्न महेन्द्रा कम्पनीको फूल अप्सन स्कर्पियो गाडी बिनाभन्सार पास बिगत दुई बर्ष देखि नेपालमा निर्वाध रुपमा चलिरहेको पिस पोखरा अनलाइनले उल्लेख गरेको छ ।

सुनसरीका प्रमुख जिल्ला अधिकारी मोहन चापागाईंले कृष्णदासको बारेमा दुईवटा नागरिकता लिएको विषयमा उजुरी परेको बताए । उनका अनुसार उजुरीको विषयमा अनुसन्धान भइरहेको र प्रमाणहरु जुटाएर आवश्यक कारबाही गरिने बताए । दोहोरो नागरिकता लिएको विषय बाहेक भन्सार जाँचपास बिना भारतीय नम्बर प्लेटको गाडी चलाएको, जडीबुटी तस्करीमा संलग्न भएको विषयमा चाहि कुनै उजुरी नरहेको उनले प्रष्ट्याए ।

अधिवक्ता गोपी शर्मा सुवेदीका अनुसार नेपालको नागरिकता ऐन २०६३ को दफा १३ मा दोहोरो नागरिकता प्रमाणपत्र लिनुलाई गैरकानूनी काम भनि परिभाषित गरेको छ ।

## पक्षेअमा डेढ महिना मै हर्टकेयर सेन्टर

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा ५ वैशाख ।**

पश्चिमाञ्चल सबैभन्दा बढी बिरामीको चाप हुने पश्चिमाञ्चल क्षेत्रीय अस्पतालमा अब हर्टकेयर सेन्टर स्थापना हुने भएको छ । अहिलेसम्म मुटुरोग विशेषज्ञको एउटा मात्र दरबन्दी रहेको र सामान्य उपचार मात्र हुने गरेकोमा अबको एक / डेढ महिनामा हृदयाघातको उपचार र शल्यक्रिया सुविधासहितको सेवा संचालन गर्न लागिएको मेडिकल सुपरिटेन्डेन्ट डा श्रीकृष्ण श्रेष्ठले बताए । लायन्स अन्तर्राष्ट्रिय डिष्ट्रिक्ट ३२५ बी १ नेपालको पहलमा लायन्स अन्तर्राष्ट्रियबाट करिब एक करोड सात लाख रुपैयाँ हर्ट केयर स्थापनाको सहयोगका लागि स्वीकृति भइसकेको डिष्ट्रिक्ट गभर्नर ध्रुवबहादुर थापाले जानकारी दिए ।

'लायन्स अन्तर्राष्ट्रियबाट पोखरामा हर्ट केयर सेन्टर स्थापनाका सहयोग रकम स्वीकृत भइसकेको छ, उपकरण नआएर मात्रै हो, छिटै उपचारसेवा सुरु हुन्छ । उनले भने,-'मुटुका रोगीहरुलाई पोखरामै राम्रो उपचार प्रदान गर्ने हाम्रो लक्ष्य पूरा हुँदैछ ।' हर्ट केयर सेन्टर स्थापनाका लागि पोखरा उद्योग वाणिज्य संघलगायत



अन्य व्यवसायी तथा निजी क्षेत्र र सरकारी नियकासँग सहकार्य भएको उनले बताए । हर्ट केयर सेन्टर स्थापना पछि पोखरा तथा आसपासका जिल्लाबाट धेरै मानिसहरु लाभान्वित हुने छन् ।

हर्ट केयर सेन्टर स्थापनाका लागि पोखरा उद्योग वाणिज्य संघले बिउ पुँजीको रुपमा १५ लाख रुपैयाँ सहयोग गरिसकेको छ । पोखरामा हर्ट केयर सेन्टर अत्यावश्यक भएकाले आफूहरुले सहयोग प्रदान गरेको संघका अध्यक्ष बिन्दुकुमार थापाले बताए । 'लायन्ससँग सहकार्य गरी हर्ट केयर सेन्टर स्थापनाका लागि हामी सक्रिय भएर लाग्छौं,' उनले भने । हर्ट केयर सेन्टर स्थापनाका लागि पश्चिमाञ्चल क्षेत्रीय अस्पतालले भवन उपलब्ध गराइसकेको छ ।

'पहिलो चरणमा ४ वटा बेडबाट मुटुको उपचार शुरु हुन्छ' गभर्नर थापाले भने । यसअघि मनिपाल मेडिकल कलेजले पश्चिमाञ्चलमै पहिलो पटक हृदयघात निदान गर्ने क्याथ ल्याव गत चैतबाट सुरु गरेको छ । राजधानी बाहिरको यो चौथो क्याथ ल्याब हो । यसअघि धरान, बिराटनगर र चितवनमा यो सेवा सुरु भइसकेको छ । तीन सय ५० शैयाको क्षेत्रीय अस्पतालले गत आर्थिक वर्षमा मात्र चार लाख भन्दा बढीलाई ओपीडी सेवा प्रदान गरेको छ । गण्डकी र धवलागिरीका विभिन्न जिल्लाबाट बिरामीहरु यहाँ आउने गरेका छन् । यो अस्पताललाई पोखरा स्वास्थ्य विज्ञान प्रतिष्ठान बनाउन सरकारी स्वीकृति नै आइसकेको छ । यसको लागि संसदले ऐन पनि पारित गरिसकेको छ ।

## मनाङ–मर्स्याङ्दी अन्तिम चारमा

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा ५ वैशाख ।**

लक्ष्मी हुण्डाइ मनाङमर्स्याङदी क्लव पाँचौ पोखरा कपको सेमिफाईनल प्रवेश गरेको छ । पोखरा रंगशालामा आइतबार सम्पन्ने खेलमा रमपम झापा ११ लाई १-० ले हराउँदै मनाङ अन्तिम चारमा पुगेको हो । खेलको अतिरिक्त समयमा विश्वास श्रेष्ठले गरेको एक मात्र गोलनै निर्णायक बन्न पुग्यो । अन्तिम समयमा सम्हालिन नसक्दा झापा प्रतियोगिताबाट वाहिरियो । श्रेष्ठ आजको खेलको म्यान अफ दि म्याच घोषित भए । पोखरा कपमा दोस्रो र तेस्रो संस्करणको विजेता मनाङले फाईनल प्रवेशको लागि बैशाख ८ गते सशस्त्र प्रहरीको एपिएफ क्लबसँग खेल्नेछ । मनकापमना पोखरा कप अन्तर्गत सोमबार थ्री स्टार क्लव र त्रिभुवन आर्मी क्लव विच खेल हुने छ । मनाङले गत माघमा पोखरा रंगशालामै सम्पन्न १४ औं आहा रारा गोल्डकपको उपाधि समेत जितेको थियो । तीन महिना अघि सम्पन्न खेलमा झापा ११ लाई ४-० ले हराएको मनाङ जीत दोहोऱ्याउन सफल भएको हो । खेल सकिएपछि सञ्चारकर्मीलाई प्रतिक्रिया दिदै लक्ष्मी हुण्डाई मनाङ मर्स्याङदीका प्रशिक्षक छिरिङ लोप्साङ गुरुङले आइतबारको खेलमा मनाङको खेलाडीले रणनीति अनुसार खेल प्रस्तुत नगरेको वताए । खेलको शुरुको ७ मिनेटको अवधिमा अवसर पाउँदा पनि गुमाउनुपर्दा सोचेजस्तो खेल हुन नसकेको उनको भनाइ रहेको थियो । आइतबारको खेलबाट आफु सन्तुष्ट नभएको समेत गुरुङले वताए । त्यस्तै रमपम झापा एघार का क्याप्टेन प्रभेष कटवालले आफ्नो खेलाडीको गल्तीका कारण आजको खेलमा पराजित हुनु परेको वताए । आफ्नो टीमले गोल गर्ने प्रसस्त अवसर पाउदा पनि गोल गर्न नसक्नु झापाको लागी दुर्भाग्य भएको उनले वताए । प्रतियोगिताको फाईनल खेल बैशाख ११ गते हुनेछ ।

## मोटरसाइकल चोर्ने गिरोह पक्राउ

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा ५ वैशाख ।**

पोखरा र आसपासको क्षेत्रमा मोटरसाईकल चोरी गर्ने गिरोह धादिङबाट पक्राउ परेका छन् । गत मंसिर २२ गते पोखरा ६ हल्लनचोकका टेकनाथ भण्डारीको ग १० प ६७३३ नम्बरको बुलेट मोटरसाईकल चोरी गर्नेलाई धादिङबाट पक्राउ गरिएको जिल्ला प्रहरी कार्यालय कास्कीले जनाएको छ । मोटरसाईकल चोरी गर्ने धादिङ झर्लाङ २ का २५ बर्षीय राहुल तामाङ र अर्जुन तामाङको साथै चोरीको मोटरसाईकल खरिद गर्ने रसुवा स्याफ्रुवेंशी ९ का आमोश तामाङलाई पक्राउ गरिएको हो । पोखराबाट मोटरसाईकल चोरी गरी धादिङ पुर्याएको सूचनाको आधारमा जिल्ला प्रहरी कार्यालय धादिङसंग समन्वय गरी शनिवार उनीहरुलाई पक्राउ गर्न सफल भएको डिएसपी गजुसिद्धि बज्राचार्यले जानकारी दिए । उनीहरुलाई धादिङ निलकण्ठ नगरपालिका वडा नं. ३ पुछारबजारबाट पक्राउ गरी ल्याइएको हो । पक्राउ परेका बिरुद्ध चोरी मुद्दामा म्याद थप गरी थप अनुसन्धान भईरहेको प्रहरीले जनाएको छ । प्रहरीको प्रारम्भिक सोधपुछ तथा अनुसन्धानका क्रममा पक्राउ परेका मध्ये अर्जुन तामाङ मोटरसाईकल चोरी मुद्धामा केन्द्रिय कारागारमा ४ बर्ष जेल सजाय भुक्तान गरी २०७१ असोज महिनामा छुटेको खुल्न आएको छ ।

## होण्डा सिबी हर्नेट मोटरसाइकल भित्रियो

**पोखरा ५ वैशाख ।**

होण्डा कम्पनीको नयाँ मोटरसाइकल १६० सिसीको सिबी हर्नेट पोखरामा भित्रिएको छ । होण्डाको आधिकारिक बिक्रेता कुँवर ब्रदर्स एण्ड सन्स नयाँ बजार पोखराले एक कार्यक्रमका बीच आइतबार यसको बिक्री सुरुवात गरेको हो । एच.एम.एस.आइ.का बरिष्ठ उपाध्यक्ष वाई एस गुलरियाले मोटरसाइकलको बिक्री सुरुवात गरेका हुन् । मोटरसाइकलको २ लाख ६० हजार ९ सय रुपैयाँ मूल्य पर्ने प्रवन्ध निर्देशक चन्द्र कुँवरले जानकारी दिए । एसएमएस मार्फत ग्राहकलाई ४ हजारदेखि एक लाख रुपैयाँसम्मको छुट प्रदान गरिने कुँवरले जानकारी दिए । ग्राहकको हितलाई मध्यनजर गरी नयाँ वर्षको अवसरमा उक्त छुट अफर ल्याइएको उनले बताए । २० पटकसम्म फ्रि सर्भिसिङ र पाँच वर्षसम्म स्पेयर्स पार्टस्मा १० प्रतिशत छुटको व्यवस्था गरिएको सन्सका सेल्स



म्यानेजर विष्णुप्रसाद दाहालले जानकारी दिए । नयाँ मोटरसाइकल को दुई वर्षसम्म इन्जिन ग्यारेण्टी रहेको उनले बताए । युवा पुस्तालाई लक्षित गरी तयार गरिएको मोटरसाइकलमा ट्युलेस टायर, डिजिटल मिटर जडान गरिएको छ भने १३ लिटर ट्यांकी क्षमता छ । बिक्री शुरुवात भएको उक्त नयाँ मोटरसाइकल १० वटा बुकिङ भइसकेको कुँवरले जानकारी दिए । काठमाडौंपछि पोखरामा यसको बिक्री सुरु भएको हो । एक साताभित्र देशभरका डिलरबाट यो मोटरसाइकल खरिद गर्न सकिने कम्पनीले बताएको छ । नयाँ मोटरसाइकल सुरक्षित र भरपर्दो भएकाले ग्राहकको मन जित्ने कम्पनीको विश्वास छ । 'होण्डाको नयाँ मोटरसाइकल पोखरामा निकै लोकप्रिय हुने विश्वास गरेका छौं,' कुँवरले भने ।

■ गोरखालीहरू साना कदका हुन्छन् तर उनीहरूमा उदम्य साहस हुन्छ ।
*- लर्ड नेपियर*

## सम्पादकीय ...

# गुटवन्दी अन्त्य गर

नेपालका राजनीतिक दलहरुमा गुटबन्दी रोगका रुपमा मौलाउँदै गएको छ । प्रमुख तीन राजनीतिक दल र यसबाहेकका अन्य स-साना दलहरु पनि आन्तरिक गुटबन्दीमा फसेर गणतन्त्रको उपहास गरिरहेका छन् । प्राय: सबै दलका नेताहरुले गुटबन्दी अन्त्य गरी पार्टीलाई सुदृढ बनाउने प्रतिबद्धता गरे पनि व्यवहारत: कार्यान्वयन भने गर्न सकेको पाइँदैन । गुटबन्दीले दललाई कमजोर बनाउनेमात्र होइन, व्यक्तिगत मनोमानीसमेत बढाउने गरेको छ । बिहीबार एमाले केन्द्रीय समिति बैठकमा ओली सरकारको कार्यशैली र मनोमानीप्रति एमाले वरिष्ठ नेता माधवकुमार नेपाल निकै आक्रामक रुपमा प्रस्तुत भए । पूर्वप्रधानमन्त्रीसमेत भइसकेका नेपालले एमालेमा संस्थागत निर्णय हुन नसकेको, संस्थागत पक्षबाटै चरम गुटबन्दी भएको आरोप लगाएका थिए । पार्टीभित्र छलफल नगरी चीन भ्रमणमा टोली छनोट गरेको, राजनीतिक नियुक्ति गरेको, विभिन्न मुलुकमा राजदूत नियुक्ति गरेको विषयमा अध्यक्ष ओलीसँग वरिष्ठ नेता झलनाथ खनालले पनि आपत्ति प्रकट जनाए । पार्टीभित्र आन्तरिक गुट तथा उपगुट सक्रिय हुने गरे पनि प्रक्रियागत ढंगले पार्टीभित्र संस्थागत निर्णय नगर्ने रोग झनै बढेर गएको छ । यसले लोकतन्त्रलाई नै कमजोर बनाउने काम गरेको छ । नेतृत्वको होडबाजीका कारण सबै पार्टीमा गुटबन्दीले नराम्ररी गाँजेको अवस्था छ । गुटबन्दी मौलाउनुको मुख्य कारण नेतृत्वमा पुग्नु नै हो । यसको प्रत्यक्ष प्रमाणका रुपमा केही समयअघि सम्पन्न कांग्रेस महाधिवेशनलाई लिन सकिन्छ । कांग्रेसमा संस्थापन अर्थात् कोइराला र देउवा पक्षको गुट सुशील कोइरालाको निधनसँगै बढेर तीनवटा बन्यो । महाधिवेशनमा संस्थापन गुटको नेतृत्व रामचन्द्र पौडेलले गरे भने नयाँ गुटबन्दी कृष्णप्रसाद सिटौला प्यानलले गऱ्यो । महाधिवेशनमा विजयी शेरबहादुर देउवाले गुटबन्दी अन्त्य गरी पार्टीलाई सुदृढ बनाउँछु भन्ने गरे पनि आ-आफ्ना स्वार्थअनुकूल गुटबन्दी चलिरहेको छ । यद्यपि, कांग्रेसमा गुटको रोग तत्कालका लागि हटेको जस्तो ठानिए पनि गुटबन्दीको खेल भने रोकिएको छैन । नेपालमा नेतृत्वको होडबाजी र मौलाउँदै गएको गुटबन्दीले बहुदलीय प्रजातन्त्रको बदनाम गरिरहेको अनुभूति गरिएको छ । गुटबन्दी गरिरहेका नेताहरुले आन्तरिक प्रजातन्त्रको अभ्यास गर्न नसकेको देखिएको छ । दलभित्र देखिएका आन्तरिक गुटबन्दी अन्तत: सत्ता-संघर्षसँग जोडिने गरेका छन् । गुटबन्दीले कुनै एक नेता वा व्यक्तिका हकमा फाइदाजनक नै होला तर राजनीतिक मूल्यमान्यता, विधिको शासन, पारदर्शिता र संस्थागत निर्णयका आधारमा नेतृत्व गर्नेका हकमा गुटबन्दी प्रत्युत्पादक बन्न सक्छ । गुटबन्दीले राजनीतिक दललाई चिराचिरा बनाएको दृष्टान्त हेर्न एक दशक लामो जनयुद्ध गरेर आएको पार्टीलाई हेरे पुग्छ । माओवादी पहिलो संविधानसभाबाट पहिलो दल बन्न सफल भएको थियो । तर, सो पार्टीमा नेतृत्वको होडबाजी यति बढेर गयो कि गुटबन्दीले माओवादीलाई पाँच/छ टुक्रा बनाइदियो । पछिल्लो उदाहरण एमाओवादीबाट बाहिरिएका डा. बाबुराम भट्टराई हुन् । उनले एमाओवादीमा रहँदा छुट्टै गुटको प्रतिनिधित्व गरेकै हुन् । अन्ततोगत्वा नेतृत्वको होडबाजीकै कारण उनले माउ पार्टी छाडे, र नयाँ शक्ति नेपालको नेतृत्व गर्न पुगे । दलभित्रको समूह, गुट तथा उपगुट सबै पार्टीमा हुने गर्दछ । नेतृत्वलाई थप जिम्मेवार बनाउन वा मनोमानी रोक्नका लागि यस्ता समूहको दबाबले कुनै बेला निर्णायक भूमिका खेल्न पनि सक्छ । तर, यो सत्ता-संघर्ष वा नेतृत्वका लागि उपयोग भइरहेको छ । यस्तो प्रवृत्ति हट्नु जरूरी छ ।

## आजको पञ्चाङ्ग

**मिति २०७३ साल वैशाख ६ गते सोमबार, तदनुसार अप्रिल १८ सन् २०१६, श्रीशाके १९३७, नेपाल संवत् ११३६, सौम्यनामक: संवत्सर:, सूर्य पृथ्वीको उत्तरी गोलार्द्धमा प्रवेश गरिसकेका छन् । वसन्त ऋतु चलिरहेको छ । चान्द्रमान अनुसार चैत्रशुक्लपक्ष चलिरहेको छ । सौरमान अनुसार आज चैत्रशुक्लपक्षको अष्टमी तिथि ५२ घटि ११ पला अर्थात रातिमा २ बजेर ३५ मिनेटसम्म त्यसउप्रान्त नवमी तिथि लाग्नेछ । आज सूर्य मेष राशिमा,चन्द्रमा मिथुन राशिमा अहोरात्र रहनेछ । आज दिनमान ३१ घटि ५३ पलाको रहनेछ। आज सूर्योदय नेपालको काठमाडौं केन्द्रबिन्दुमा रहि बिहान ठीक ५ बजेर ४२ मिनेटमा मैत्र मुहूर्तमा हुनेछ भने सूर्यास्त साझ ६ बजेर २७ मिनेटमा हुनेछ।**

## आजको राशिफल

**मेष** : गर्न खोजेको काम विफल हुनेछन, मनमा अशान्ति छाउने, स्वास्थ्यमा एक्कासी गडबढी आउन सक्नेछ सर्तक हुनुहोला ।

**वृष** : विरोधीहरू सक्रिय हुनेछन्, अपजस आईलाग्ने, अनाश्यक टकराव खेप्नु पर्ने दिन शुभ छैन चनाखो रहनुहोला ।

**मिथुन** : यशकृति बढ्ने, शतुमाथि विजय हासिल, घरमा नयाँ मान्छेको आगामन हुनेछ, दिन सुखद् बित्नेछ ।

**कर्कट** : पारिवारिक जमघट बढ्ने, राजनैतिक क्षेत्रमा सफलता, गरेको प्रयास सार्थक रहनेछ दिन शुभ छ उपयोग गर्नुहोला ।

**सिंह** : आफन्तजनसंग मनमुटाव हुन सक्ला, मन चञ्चल रहने, पेटवा कम्मरको रोग लाग्ने, चिन्ता पर्ने खवर प्राप्त होला ।

**कन्या** : आटेजति काम गर्न असफल, अफन्तबाट विरोध आउनेछ, व्यापारमा मन्दी आउने, दिन सामान्य रहेको छ ।

**तुला** : सबै क्षेत्रबाट लाभ पाइन सक्ने, आर्थिक समस्याको समाधान हुने, नविन कार्यको थालनी गर्दा राम्रो, दिन शुभ रहेको छ ।

**वृश्चिक** : मानसिक पीडा थपिने, मानहानी, आफन्तबाट धोका हुन सक्ने, आम्दानीका श्रोतहरू घट्नेछन् नआतिनु होला ।

**धनु** : टाढाबाट धन प्राप्त हुन सक्नेछ, प्रियतम भ्टघाट हुनेछ, धार्मिक क्षेत्रबाट लाभ पाइनेछ, स्वास्थ्य राम्रो रहेछ ।

**मकर** : नयाँ ठाँउमा जाँदा आदरसत्कार पाइने, नयाँ क्षेत्रमा गरेको लगानीबाट मनग्य आम्दानी, दिन अत्यन्त राम्रो छ ।

**कुम्भ** : सरकारी कार्य असफल हुन सक्छ, मुद्दा मामिलामा हात नहाल्नुहोला, इज्जतमा आँच आउन सक्नेछ ।

**मीन** : चोटपटकको भय, टाढाको यात्रा असफल हुनेछ जोगिनुहोला, नास्तिक विचारले सताउनेछ, समय खराब रहेको छ ।

**राशिफल लेखक : युवा ज्योतिषी हरि पन्त, मो.९८४६१४७३६९**

# 'मुर्दाशान्ति' जस्ता विद्यार्थी संगठन

✍ **खिलानाथ ढकाल**

२०६२/६३ सम्म हेर्ने हो भने नेपालको विद्यार्थी राजनीतिले देशलाई तरंगित बनाउनसक्ने क्षमता राख्थ्यो। अझ त्योभन्दा अगाडिका परिवर्तनहरूमा विद्यार्थी राजनीतिले पुऱ्याएको योगदान बिर्सन नसक्नेगरीकै छ। विद्यार्थी राजनीतिमार्फत मूलधारको राजनीतिक नेतृत्वमा कतिपय नेताहरू कहलिएकै पनि छन्। २०६२/०६३ को आन्दोलन पश्चात्को विद्यार्थी राजनीतिलाई हेर्ने हो भने यो समाजले पचाउनै नसक्ने अवस्थामा पुगेको छ। कतिपय सन्दर्भमा स्वयम् नेताहरूले नै प्रश्न उठाउने गरेका छन् कि विद्यार्थी राजनीतिलाई अब कुन हिसाबले परिभाषित गर्ने? खिइँदै खिइँदै अहिले अलोकप्रियताको चरमबिन्दूमा पुगेको विद्यार्थी राजनीतिलाई पुनर्भाषित गर्ने बेला आएको नेताहरू बताउँछन्।

केही सार्वजनिक कलेजहरूमा थोरै जमातमा रहेका विद्यार्थी संगठनहरू विद्यार्थी हकहितको निम्ति हैन, कसले कति विद्यार्थी छिराएबापतको कमिशन उठाउन, शैक्षिक संस्थामा अनावश्यक हडताल, स्रोतसाधनको दुरूपयोग र सरुवा-बढुवामा मात्र केन्द्रित छन्। यिनले संगठन र पार्टीको जनाधार, भोट बलियो बनाउने हैन, भएको जनाधार पनि माटोमा मिलाउँदैछन्। विश्वविद्यालयमा रहेका विद्यार्थी संगठनहरू देशको बिग्रँदो अवस्थाप्रति चिन्तित छैनन्, यदि हुन्थे भने त आज देशमा नाकाबन्दी र मधेस आन्दोलनले यत्रो समस्या सिर्जना गर्दा त्यसविषयमा बहस चलाउन सक्थे, राजनीतिक नेतृत्वलाई घच्घच्याउन सक्थे। विश्वविद्यालयमा अध्ययन गर्ने विद्यार्थी आम सरोकारका विषयमा किन चुँ बोल्न सक्दैनन्?

विद्यार्थी राजनीतिबाटै उदाएका नेपाली कांग्रेसका लोकप्रिय युवा नेता गगन थापा नेपाली विद्यार्थी राजनीतिको वर्तमान अवस्थाप्रति जति चिन्तित थिए, अब छैनन्। किनभने विद्यार्थी राजनीतिको यही अवस्था आजको दिनमा अर्थपूर्ण रहँदैन भन्ने निष्कर्ष उनको छ। उनका अनुसार कुनै बेला अत्यन्तै महत्वपूर्ण मानिएको विद्यार्थी राजनीतिबारे अहिले चासो नै हराएर जान थालेको छ। 'विद्यार्थी राजनीतिले यदि शैक्षिक गुणस्तर बढाइदिएको, एकेडेमिक बहस चलाइदिएको अथवा जनाधार बलियो बनाइदिएको भए आज किन विद्यार्थी र अभिभावक यसप्रति विकर्षित हुन्थे?,' थापाको प्रष्ट बुझाइ छ, 'आजको दिनमा तपाईं हामी छोराछोरी पढाउन कस्तो ठाउँ खोज्छौं जहाँ विद्यार्थी राजनीति हुँदैन।' शनिबार सेतोपाटीको कार्यालयमै उनले एक घन्टासम्म विद्यार्थी राजनीतिको औचित्यबारे बहस गरे। उनको निष्कर्ष यो छ - अब शैक्षिक संस्था छोडेर बाहिर निस्कौं। 'बाँकी सबै छोडेर बीस पचास शैक्षिक संस्थामात्र कब्जा गरेर हुन्छ? हाम्रो उद्देश्य पूरा हुन्छ यतिले? राजनीतिक उद्देश्य, रणनीतिक उद्देश्य नै मिलेन, त्यसैले विद्यार्थी राजनीति अहिले हाम्रो प्राथमिकतमा छैन। हामी खिइएर सानो ठाउँमा पुगेका छौं, त्यो ठाउँ छोड्यौं भने फराकिलो ठाउँ देख्छौं,' थापा भन्छन्।

**विद्यार्थी राजनीतिको इतिहास**

थापाका अनुसार नेपालको प्रजातान्त्रिक आन्दोलन, विद्यार्थी आन्दोलन, संघ-संगठनको उपादेयताको बारेमा चर्चा परिचर्चा गर्ने क्रममा यसको स्थापनाकालको दिनसम्म नपुगेसम्म सही निष्कर्षमा पुग्न सकिँदैन। एकप्रकारले नेपालको विद्यार्थी आन्दोलनले नै प्रजातन्त्रको जग हालेको हो। इतिहास यही छ। २०१७ सालको शाही 'कू'पश्चात् चेतनाका हिसाबले पनि र संगठित हुने हिसाबले पनि नेपाली कांग्रेस लगायत पार्टीले विद्यार्थी संगठित बनाए। त्यो बेला जायज र ऐतिहासिक हिसाबले पनि उपयुक्त थियो। त्यो क्रममा नेपालका विद्यार्थी संगठनको इतिहास बन्यो। प्रजातान्त्रिक आन्दोलनलाई टेवा पुर्‍यायो।

त्यसबेला योगदान पुऱ्याउने मान्छेकै नेतृत्व अहिले पार्टीमा स्थापित पनि छ। कतिमात्रमा भयो भएन, तर त्यो योगदान हो। दलका निम्ति प्रशिक्षित पंक्ति पनि स्थापित गर्‍यो र प्रजातान्त्रिक आन्दोलनको जग पनि हाल्यो। २०४६ सालको परिवर्तनपछि अब विद्यार्थी संगठनले आफ्नो भूमिका परिवर्तन गर्नुपर्छ भन्ने बहस यदाकदा चल्थ्यो, चलेको हो। हामी भर्खर क्याम्पस प्रवेश गर्दा छलफल भएकै हो। विद्वानहरूले भनेका पनि हुन्। अवस्था परिवर्तन भइसक्यो भन्ने थियो। तर विद्यार्थी संगठनले काम गर्ने ढाँचामा परिवर्तन आएन, पुरानै ढर्रामा रह्यो। सायद, नेपालको प्रजातान्त्रिक कालपश्चात् राम्रो ढंगले विद्यार्थी राजनीतिलाई व्यवस्थित गरिएको भए अहिले अस्तित्व नै संकटमा पर्ने अवस्था आउँथेन। पार्टी र विद्यार्थी संगठनको सम्बन्ध के हुने? अब चाहिन्छ कि चाहिँदैन, चाहिने भए किन ? छलफल हुनै सकेन।

**राजाको प्रत्यक्ष शासनपछि**

राजा ज्ञानेन्द्र शाहको प्रत्यक्ष शासन सुरू भएपछि फेरि नेपाली राजनीति पञ्चायती व्यवस्थातिर धकेलिन खोज्यो। अब एकपटक पञ्चायतविरुद्धको जस्तै लडाइँ लड्नुपर्ने आवश्यकता महसुस भयो। अधिकार पुन:स्थापना गर्ने सन्दर्भमा विद्यार्थी आन्दोलन एक प्रकारले जायज थियो। सशस्त्र युद्धमा रहेको माओवादी र संसदभित्र रहेका दलको बीचमा एउटा राजनीतिक सम्झौता भएको थियो।

**पार्टी-विद्यार्थी संगठन सम्बन्ध**

पहिलो: आजको दिनमा नेपालको पार्टीको भ्रातृ संगठनको रुपमा विद्यार्थी संगठनको वैधानिक हैसियत प्राप्त छ। चाहे त्यो नेविसंघ, अनेरास्ववियु वा अखिल क्रान्तिकारी जुनसुकैमा होस्। किन बनाएको भन्ने सन्दर्भमा स्पष्ट धारणा छ। कुनै निश्चित उमेरमा उसले विचार पुर्‍याउँछ, आफ्नो मतदाता बढाउन चाहन्छ, सदस्य बनाउन चाहन्छ, जसरी राजनीतिक दलले समाजमा आफूलाई स्थापित गराउन चाहन्छ।

दोस्रोः त्यो आफ्नो नर्सरी पनि हो। नर्सरीबाट बेर्नाहरु निस्किन्छन्, कुनै ठूलो रुख बन्छ, कुनैले फल दिन्छ, कोही जोगिन्छन्। कोही मासिन्छन्। पार्टीको सदस्यतासँग सम्बन्ध राख्छ। हामीकहाँ कलिलै उमेरमा पार्टीको सदस्यता लिएर विस्तारैविस्तारै प्रशिक्षित गरेर दस-बीस वर्ष काम गरेपछि नेतृत्वमा लाने परम्परा छ। तेस्रो: यो प्रतिस्पर्धाको राजनीति हो। कुनै संगठनले आफ्नो ठाउँ छोड्नेबित्तिकै अरु हावी हुन्छन्। विधानले संविधानले बर्जित गरेको छैन। अर्कोको बर्चश्व बढ्ने भएपछि आफू पछि हट्ने कुरा भएन। १८र२० वर्षमुनिकालाई विद्यार्थी राजनीतिमा ल्याउनु हुँदैन भन्ने विषयमा छलफल भएको मलाई याद छ। हामीले त यो उमेरमा नजाने भन्यौं, तर अन्यले पाँच छ कक्षा पढेका विद्यार्थी पनि लिन थाले। फलानो कमिटीको अध्यक्ष भन्न थालेपछि अरु पार्टीले पनि त्यसलाई एक्लै रहन दिने भन्ने हुँदैन। थापाका अनुसार पार्टीलाई यो तरिकाको संगठनले के गर्छ भन्ने हो। पार्टीले आफ्नो विभागमात्र बनाएको हैन। हाम्रो उपस्थिति कहाँ रहने भयो भन्दा विभिन्न प्राज्ञिक संस्थामा। त्यो हिसाबले हेर्ने हो भने नेपालमा अहिले चाहिँ एकप्रकारले कस्तो अवस्था छ भने दस कक्षासम्म त विद्यार्थी संगठनको उपस्थिति कहीँ पनि छैन। स्कुलहरू खाली छन्। धेरैजसो ठाउँमा हाइयर सेकेन्डरी स्कुलमा पनि छैन। ११-१२ सम्म छैन। ११-१२ पास गरेपछि भने अत्यन्त सानो संख्यामा छ। नेपालभित्र जाने र बाहिर जाने विद्यार्थीको समूह नै छ।

**आकर्षण छैन, बढाउने सोच पनि छैन** :? विद्यार्थी संगठनमा मैले पनि अगाडि काम गरेको हो। त्यतिबेला त्यस्तो थिएन, एकप्रकारको क्रेज थियो। अहिले जहाँ उनीहरूको उपस्थिति छ, भएको ठाउँ र नभएको ठाउँको तुलना गर्ने हो भने उपस्थिति भएको ठाउँमा गज्जब मूल्यांकन हुनुपर्ने हो। गज्जब एकेडेमिक प्राज्ञिक वातावरण राम्रो भएको हुनुपर्ने हो, त्यहाँको विद्यार्थीले प्राप्त गरेको ज्ञान र अवसर एकदमै फरक हुनुपर्ने हो। जहाँ संगठनको उपस्थिति छैन त्यहाँबाट विद्यार्थी संगठनको माग पनि छैन। हामीले हाम्रो श्रेष्ठतालाई प्रमाणित गर्न सकेको अवस्था छैन। हामी जहाँ छौं त्यो ठाउँमा हाम्रो काम, कार्यशैली, एजेण्डाको प्रभाव चाहिँ छ, पहिलेको राजनीतिक हिसाबले पनि हो। हामी कहीँ न कहीँ जोडिएका थियौं।

**संगठन चाहिन्छ चाहिँदैन सन्दर्भमा**

थापाको बुझाइमा पार्टीहरूलाई विद्यार्थी संगठन चाहिन्छ कि चाहिँदैन भन्ने सन्दर्भमा त्यो राजनीतिक पार्टीले निर्णय गर्ने अधिकार हो। कतिवटा विभाग बनाउने, संगठन कहाँ बनाउँछु भन्ने उसको अधिकार क्षेत्रभित्रको कुरा हो। तर उसको निर्णयले कुन-कुन संस्थामा आफ्नो उपस्थिति जनाउन पाउँछ, कहाँ-कहाँ क्रियाशील बनाउन पाउँछ भन्ने कुरा त पार्टीसँग मात्र जोडिएको हैन।

अब बहस गर्ने बेला आयो। स्कुलमा छैन एकदमै राम्रो भयो। प्लस टु मा छैनौं ठिक छ। हामी युनिभर्सिटीको केही क्याम्पसमा मात्र छौं । मलाई के लाग्छ भने इन्भेष्टमेन्ट र आउटपुटको हिसाबले हेर्यो भने सबैभन्दा बढी इन्भेष्टमेन्ट भएको क्षेत्र हो पब्लिक एजुकेशन सेक्टर। त्यहाँ त हाम्रो आउटपुट एकदमै अन्तर छ। विद्यार्थी संगठन त्यहाँ नगएको वर्षौं भयो। त्यहाँ विद्यार्थी संगठन महत्वपूर्ण थियो भने त त्यहाँ जानुपर्थ्यो। खास त्यत्रो सकारात्मक परिवर्तन गर्न सकेको अवस्था रहेन। नेपालका राजनीतिक दलले बनाएका विद्यार्थी संगठन जति छन्, उनीहरूलाई विश्व विद्यालयभित्र स्वतन्त्र विद्यार्थी युनियन चुनाव गर्छौं भन्ने अधिकार छ। त्यो गर्ने कि नगर्ने र गरे कसरी हुने अब अहिले नयाँ बहस सुरू भएको छ, उमेरको। एक कदम भए पनि त्यो सकारात्मक बहस हो।

म साथीहरूको बीचमा भन्छु, कस्तो अनप्रोफेसन हो यो? १७-१८ वर्षसम्म एकदमै आफ्नोमात्रै राजनीतिक भविष्य सोच्यो भने पनि १७-१८ वर्षसम्म सभापति हुन्छ भनेर कुर्यो भने उसको दलको सफलताको हिसाबले र रणनीतिको हिसाबले त एकदमै बढो कमजोर रणनीति हो। एउटै क्याम्पसमा १७-१८ वर्ष बिताएको मान्छे कहाँ पुग्छ? त्यो ढंगले थुप्रै मान्छेको इनर्जी टाइम वेस्ट भएको अवस्था छ।

**साँघुरो घेरामा विद्यार्थी संगठन**

अहिलेको समयमा छलफलको विषय के हुन सक्छ भने पब्लिक संस्था जहाँ सरकारको लगानी छ, त्यहाँ चाहिँ विद्यार्थी उमेर तोकिएको छ। १८ वर्षमुनिका विद्यार्थीलाई राजनीतिमा लगाउन पाइँदैन। स्वतन्त्र विद्यार्थी युनियन होस्, प्रतिस्पर्धा होस्, कलेजभित्र होस्, त्यो चाहिँ पार्टीमा आवद्ध भएको विद्यार्थी हुनुपर्ने कि नपर्ने? भारतमात्र हैन, अन्यत्र पनि हेर्यौं। विद्यार्थी संगठन भएको देख्यौं तर पार्टीमा आवद्ध भएको विद्यार्थी संगठन चाहिँ सरकारी शिक्षण संस्थामा चाहिन्छ कि चाहिँदैन भन्ने छ। एउटा उमेर समूहमा उसले राजनीति गर्न खोज्ला, जस्तो अहिले पार्टीले तरुण दल युवा संगठन छन्, त्यो उमेर समूहमा विचार लान्छ। जनताले कति विश्वास गरेका छन् कि छैनन्, म चाहिँ ८० प्रतिशतमा मात्रै विद्यार्थी संगठन देख्छु। त्यसैले, प्रतिनिधित्वको हिसाबले जोड दिने भन्दा पनि पार्टीका संगठनको मुद्दाको हिसाबले, एजेन्डाको हिसाब, कार्यशैलीले गर्दा आमरुपमा विद्यार्थी कसरी आकर्षित गर्ने, उनीहरूलाई कसरी संगठित गराउने कुरामा सोच्नुपर्छ।

पार्टीले आमरुपमा संगठन बनाउँछ। किसान संगठन बनाउँछ, अरु के-के। विद्यार्थीमात्र यस्तो संगठन हो जसले आमरुपमा हैन, सानो घेरामा। किन थोरै? त्रिभुवन विश्वविद्यालयमा मात्र किन रहेको? चुनावै गराउने हो भने प्रत्येक संस्थामा गराऔं। प्रतिस्पर्धा एकदमै उत्तम हो। राम्रो गरेको छ भन्ने लाग्यो भने सबैतिर संगठन विस्तार गरौं। यो भनिरहँदा यदि राम्रो लाग्ने हो भने माग किन नआएको? तलबाट किन नआएको? सकेसम्म बाबुआमाले पनि विद्यार्थी संगठन नभएको ठाउँ कहाँ छ भन्दै खोजीखोजी छोराछोरी भर्ना गर्न किन खोजेको? त्यसले के देखाउँछ भने हाम्रो उपस्थिति चाहिँ उपयुक्त छैन भन्ने समाजले खोज्यो। हामी अब पब्लिक इन्स्टिच्युसनमा यो ढंगले जाने हैन। निर्वाचन गराउने भनेको उपस्थितिको हिसाबले उपयुक्त हुन्छ। अहिलेको सन्दर्भमा काम गर्ने तरिकाले परिवर्तन गर्ने हो। पार्टीको सन्दर्भमा जुन दिनसम्म पार्टीको सदस्य खुला राखिँदैन, त्यो दिनसम्म यस्तो रहिरहन्छ। जब यो ढाँचा भत्काउँछौं त्यसपछि जो पनि आउन सक्छन्। सक्षम व्यक्तिको खोजी गरेर संगठनात्मक ढाँचा बनाऔं।

शैक्षिक संस्थामा हकहितका लागि भन्दा पनि फरक किसिमले किन गतिविधि गर्छन्? भएन भने ताला लाउँछन्, तोडफोड गर्छन्, मोसो दल्छन्, उनीहरूलाई कामको दायरामा ल्याउन किन नसकिएको? तिम्रो काम यो हो है भन्न किन नसकिएको? भन्ने सन्दर्भमा पार्टी एक-दुई कुरामा स्पष्ट हुनुपर्छ। पार्टीहरूले विद्यार्थी संगठन आफ्नो नियन्त्रणमा रहोस् भन्ने चाहना राख्छन्, चाहे निर्वाचन गराएर वा नगराएर होस्। चासो देखिन्छ। सबैले भ्रातृ संस्थाको प्रत्यक्ष निगरानी राख्छन्, हस्तक्षेप गराउनेसम्मको क्षमता छ। सिद्धान्तत: मानौं, सय जनालाई प्रभावित पार्न हामीले विद्यार्थी संगठन खोलेको हो। ८० जनामा छँदै छैनौं। सम्पर्कै छैन। २० जनामा छौं, १० जनामा हाम्रो छ, १० मा छैन। हाम्रो व्यवहार र शैलीका कारणले गर्दा। एकदमै राम्रोसँग हेर्यौं भने त्यसबाट पार्टीलाई यसबाट के फाइदा भएको छ? त्यसले के प्राप्त गराएको छ?

मूलत: कार्यशैली सुधार गर्ने हो समग्र सबै बदलेर। त्यसको कामले ठूलो समूहलाई आकर्षित गर्छ, विश्वास बढाउँछ भने पो फाइदा भो। मलाई लाग्छ राजनीतिक दल यो केसमा लुजर हुन्। हामी आफ्नो ठूलो पंक्ति आफूबाट अलग गराइरहेका छौं, काम गर्ने शैलीको कारणले। त्यसैले यहाँनिर राजनीतिक दलले यस्तो विद्यार्थी संगठनलाई यस्तै तरिकाले किन राख्ने? विश्वविद्यालयमा जे गरे पनि किन छुट दिने ? एकातिर प्रभाव पनि भएन। भोलिको लागि एउटा पंक्ति पनि तयार गर्न खोजेका हौं हामीले। हामीले त्यहाँ पनि लुज गर्यौं। १७-१८ वर्ष काम गरेको मान्छेमा कुनै विश्वसनीयता बढ्न सकेको छैन, समाजलाई तरंगित गर्न सक्दैन, त्यहाँभित्र भएको स्रोतसाधनमा मात्र अल्मलिएर बस्ने वातावरण बन्छ भने त्यही कुरामा हामी प्रशिक्षित दीक्षित गर्छौं भने भोलि गएर न पार्टीले मतदाता पायो, न प्रभाव पार्यो, न त उसले खोजेजस्तो पंक्ति नै पायो। विद्यार्थी राजनीतिको काम गर्ने ढाँचा लुजर भयो।

हिजोदेखि गर्दै आएकोले किन नगर्ने र अर्कोले गर्दै आएकोले हामी किन नगर्ने? भन्ने प्रश्न छ। एकछिनका लागि पार्टीले केही पनि नसोचोस्। राष्ट्रिय हित, दलसँगको आदर्श र बढो रणनीतिक हिसाबले हेर्यो भने पनि आजको दिनमा उसले विद्यार्थी संगठन चलाइरहेको तरिकाबाट कोही बाहिरको म्यानेजर हायर गरेर ल्याइयो भने उसले पहिले भन्दिन्छ- तपाईंले विद्यार्थी संगठन चलाउने तरिका फेर्नेस्। जुन उमेर समूहको विद्यार्थी ल्याउनुपर्ने हो त्यो कहाँ छ कहाँ छ। अलगथलग छ, कुनै सम्बन्धै छैन।

**खुम्चिएको खुम्चियै, प्रभाव छैन**

थापाको नजरमा विद्यार्थी संगठन खिइएर यति सानो भइसक्यो कि यत्रो वर्ष आफू काम गरिरहेको ठाउँमा पनि क्याम्पसको निर्वाचन नभएको वर्षौं भयो। होस् नहोस् छोडिदिऔं, तर हुनुपर्थ्यो भनेर त आम विद्यार्थीले माग गरेको छैन। हजारौं संख्यामा आएर किन भएन भन्दैन? शैक्षिक गतिविधि प्रभावित भयो भनेर किन आउँदैनन्? कसैले मागेनन् त। खाली माथि-माथिको विद्यार्थीले मात्र विश्वविद्यालयसँग माग गर्नेबाहेक तलबाट आएको छैन। जहाँ छैनन्, त्यहाँ हुने कुरै भएन। जहाँ छन् त्यहाँ पनि माग छैन। यसले के सिकाइरहेको छ भने यो गम्भीर समस्या हो। हामी जे छौं हाम्रो उपस्थिति मन पराइएको छैन, हामीले जसरी काम गरिरहेका छौं काम गर्ने तरिका मन पराइएको छैन। त्यसैले किन यो बन्द गर्नुपर्छ भने अब हामीले हाम्रो उपस्थिति नयाँ ढंगले दर्ज गर्ने बेला आयो। हाम्रो स्वीकार्यता बलको आधारमा, जबरजस्तीको आधारमा हैन, स्वतस्फूर्त बढोस्। समाजले रुचाओस्। हामीले यो बनाउन सक्नुपर्यो।

यहाँ त भर्ना, कसले कति भर्ना गर्‍यो, कसले कति फर्जी बिल बनायो, पियोर टेक्निकल कुरामात्र। किन हामी आकर्षण भएनौं? यत्रो मधेस आन्दोलन चलिरहेको छ। विश्वविद्यालयभित्रका विद्यार्थी संगठनले कुन विषयमा छलफल गरिरहेका छन्? कुन डिरेक्सन दिने भनेर सोचिरहेका छन्? यहाँ कहीँ केही डिबेट चलेको छ? मुर्दा शान्तिजस्तो छ। भर्ना, स्रोतसाधन, टेक्निकल कुरा, सरुवा बढुवा त्यतिमात्र चासो छ। संविधान जारी गर्ने बेला समस्या थियो। अहिले पनि नेपालमा समस्या छ। यत्रो पोलिटिकल एजेन्डा छ, कहीं कतै क्याम्पसमा बहस देखिँदै देखिँदैन। हाम्रो पालामा चाहिँ के थियो भने मेजर पोलिटिकल एजेन्डा जुन थियो त्यो चाहिँ कहाँ पुगेको थियो भने विश्वविद्यालय र क्याम्पसको हाताभित्र। त्यो विषय आउँथ्यो। जसले गर्दा आकर्षण कायम राख्यो, अब अहिले त्यो नभएको अवस्था भयो।

**मन पराएनन्, त्यसैले बाहिर निस्कौं** : के बुझ्नुपर्यो भने हामी एक त शैक्षिक संस्थामा लगभग नभएको अवस्था हो। हामीले छोड्दै गइसक्यौं। हामी अहिले जुन अवस्थामा पुगेका छौं, अब त्यही अवस्थामा किन रहिरहने? त्रिचन्द्र वा आरआर क्याम्पसमा मात्र किन चाहियो? काठमाडौं विश्वविद्यालयमा किन नचाहिएको? नेपालको थोरै क्याम्पसमा मात्र किन चाहिएको? अन्त किन नचाहिएको? चाहियो भन्ने सबैतिर राखौं, हैन भने पार्टीसँग अबद्ध भ्रातृ संगठनहरूको जसरी स्कुल खोल्यौं, अब नेपालको शैक्षिक संस्थाबाट बाहिर राखौं। यसबाट बाहिर रहे हुन्छ, अलग रहे हुन्छ। दलले विद्यार्थी संगठन बनाउँछ, त्यो विद्यार्थी संगठनले आफ्नो काम गर्छ। दलले आफ्नो संगठनको प्रभाव निर्वाचन जित्न पनि बढाउँछ। सबैतिर संगठन बनाउने भयो, काम यही हो उसको। तर उसको संगठन बनाउने तरिका र काम गर्ने तरिकामा भरपर्छ।

अहिलेको शैक्षिक संस्थामा आवश्यक छ कि छैन भन्ने सन्दर्भमा मागलाई हेरौं। कसैले रुचाएनन्, बोलाएनन्। यसले के संकेत गर्‍यो भने त्यो खालको हाम्रो उपस्थितिलाई बन्द गर्ने बेला आएको देखायो, बन्द गरौं। त्यहाँबाट बाहिर जाऔं। त्यसपछि सबै खुला भयो। हामी कुनै क्याम्पसमा गएर ताला लाउन पाएनौं। अब त हाम्रो मुद्दाहरू र काम गर्ने तरिकाबाट प्रभावित गराएर मान्छेलाई आकर्षित गर्ने हो।

त्यो ढंगबाट विद्यार्थी संघ रहन्छन्, गर्छन्। तर शैक्षिक संस्थामा उपस्थितिको सन्दर्भमा हामीहरूको उपस्थिति अनुपयुक्त भएको कारणले नै हामी राजनीतिक दलले छोड्दै पनि गएका हौं। थाहा नपाइकन, हिसाबकिताब नगरीकन बाहिरिँदै गएका छौं। शैक्षिक संस्थामा पार्टीले खोलेको संस्था छ, उनीहरूको नाममा प्रश्न उठेको छ। नैतिक प्रश्न उठेको छ, आक्षेप हैन। हामी कोही पनि राजनीति हुने शैक्षिक संस्थामा छोराछोरी पढाउन चाहन्छौं? हामी आफ्नो छोराछोरी जहाँ राजनीति छैन, त्यहाँ सकेसम्म हामी छान्ने ठाउँमा यिनीहरू छैनन् भन्ने खोज्छौं। अर्को कुरा जो व्यक्ति यस्तो अवस्थाको संगठनमा गरिरहेको छ, उसले पनि सोच्ने बेला आयो।

अब युनिभर्सिटीहरू आफ्नो नियम कानुनले चल्छन्। आफ्नो बाटो समात्छन्। प्राज्ञिक प्रशासनिक काममा सुधार गर्नु है भनेर जान्छन्। हामीले एकप्रकारको सिस्टम क्रिएट गरेर समस्या सिर्जना गरिरहेका छौं। यस्तो ठाउँमा हामीले युनिट खोल्देका छौं कि जहाँ एजेण्डा सकियो, रिसोर्सको प्रतिस्पर्धा मात्र छ। न पार्टीलाई फाइदा छ, न एकेडेमिक क्षेत्रलाई। हिजो के भो भनेर प्रश्न उठेको छैन। हामीले संविधान बनायौं, अब इस्टिच्युसन बनाऔं। जुन कुराले परिणाम दिएन, परिणाम आएन, नआएपछि अब चाहिँ एउटा बेला आयो। शैक्षिक संस्थामा उपस्थिति छोडेर फरक ढंगले विद्यार्थी संगठनहरूलाई काम गर्ने ठाउँ दिनुपर्छ।

# सातै प्रदेशमा कृषि 'सुपर जोन' बनाउने तयारी

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा ५ वैशाख ।**

कृषि मन्त्रालयले मुलुकका सातै प्रदेशमा कृषि पकेट क्षेत्र बनाएर उत्पादन बढाउने तयारीमा जुटेको छ । आगामी आर्थिक वर्ष २०७३र०७४ को बजेट तयारीमा जुटेको मन्त्रालयले उत्पादन वृद्धि गरेर कृषिमा परनिर्भरता हटाउन नयाँ रणनीति तय गरेको हो ।

मुलुक संघीय संरचनामा जाने तय भएसँगै मन्त्रालयले पनि सातै प्रदेशमा त्यहाँको हावापानी, माटो अनुकूल उत्पादन हुने बालीलाई उच्च प्राथमिकतासहित 'विशेष क्षेत्र' तय गरी बजेट बाँडफाँड सुरु गरेको छ । चालु आर्थिक वर्षमा दुई दर्जन अनुदान शीर्षकमध्ये अबौं बजेट विनियोजन गरे पनि अनुदान बजेट किसानसम्म नपुगेको गुनासो आएपछि नयाँ प्याकेज तयार गरिएको हो ।

सातै प्रदेशमा कृषि विकासका लागि एक सय ८५ वटा विशेष क्षेत्र (सुपर जोन) स्थापना गर्ने तयारीमा मन्त्रालय जुटेको छ । मन्त्रालयले धान उत्पादनका लागि १५ जिल्ला, मकै ४२, माछा २०, आलु बीउ १४ जिल्ला र मसलाका लागि १४ जिल्ला विशेष क्षेत्र तोक्न प्रस्ताव गरेको छ ।

प्रदेश ४ का ११ जिल्लामा सुन्तला, अलैंची, स्याउ, मकै, धान, फापर र माछालाई प्राथमिकतामा राखिएको छ । प्रदेश १ का १४ जिल्लामा अलैंची, तरकारी, धान, मकै, अदुवा, आलु, बेसार, सुन्तला, अम्रिसो, प्रदेश २ का आठ जिल्लामा धान, माछा, आँप, दलहन, तरकारी, गहुँ, प्रदेश ३ का १३ जिल्लामा जुनार, अलैंची, प्रांगारिक तरकारी, खाद्यान्न बाली बीउ, रेन्बो ट्राउट माछा, च्याउ, सुन्तला, केरा, अदुवा, बेसार, किबीलाई विशेष प्राथमिकतामा राखिएको छ ।

प्रदेश ५ का १२ जिल्लामा अदुवा, बेसार, सुन्तला, कफी, माछा, धान, मकै, अनार, अकबरे खुसानी, प्रदेश ६ का १० जिल्लामा स्याउ, ओखर, कर्णाली सिमी, धान, मकै बीउ उत्पादन, अनार, मौरी, सुन्तला, र प्रदेश ७ का नौ जिल्लामा आलु, स्याउ, जैतुन, मकै, दलहन, तरकारी बीउ, भटमास, माछालाई उच्च प्राथमितामा राखिएको मन्त्रालयले जनाएको छ ।

नेपालका ६६ प्रतिशत जनता कृषिमा आश्रित छन् । हरेक क्षेत्रमा उत्पादन बढाइ कृषिको व्यवसायीकरण गरिनेछ । बजेट रोजगारी सिर्जना गर्ने, उत्पादन बढाउने, गरिबी न्यूनीकरण गर्ने र कृषिलाई आत्मनिर्भर बनाउन केन्द्रिकृत हुने मन्त्रालयले जनाएको छ । त्यसका लागि किसानलाई सतप्रतिशत प्राविधिक सेवा उपलब्ध गराउने, उत्पादन सामग्री, बीउ, बिरुवा, माछा भुरामा उत्पादनमा ५० प्रतिशत, प्रयोगशालामा ५०, मेसिन औजारमा ५०, सिँचाइमा ८५ र उत्पादनपछिको भण्डारणस्थल तथा सामग्रीमा ५० प्रतिशत अनुदान दिने नीति लिइनेछ ।

उत्पादन बढाउन कृषिमा आधुनिक प्रविधि भित्र्याउने, कृषि उपज बजारीकण गर्ने, तराईमा स्यालो डिप ट्युबवेल वितरण गर्ने, कृषिको व्यवसायीकरण तथा औद्योगिकीकरण गर्ने, प्रशोधन केन्द्र स्थापना, बजार व्यवस्थापन, विषादीको असन्तुलित र अनियन्त्रित प्रयोग नियन्त्रण गरिने छ ।

आगामी वर्ष सीमान्तकृत समुदायलाई कृषि अनुदान, पारिवारिक खेती, उत्कृष्ट व्यवसायिक पशु फार्म, प्रांगारिक खेती प्रवर्द्धन, महिला कृषक सहकारी साझेदारी कार्यक्रम, मत्स्य पालन, उखु तथा चिनी विकासलगायतमा अनुदान बजेट समयमै पुर्‍याउने योजना छ । खेतीयोग्य जमिन बाँझो रहँदा उत्पादन घटेपछि सरकारले त्यहाँ खेती गर्ने तयारी गरेको छ । मुलुकमा २६ लाख ५४ हजार हेक्टर खेतीयोग्य जमिन भए पनि हाल २५ लाख २५ हजार हेक्टरमा मात्रै खेती भइरहेको छ । 'खेतीयोग्य बाँझो जग्गा उपयोगसम्बन्धी' कार्यविधि मन्त्रिपरिषद बैठकले स्वीकृत गरिसकेको छ ।

मन्त्रालयले कृषि विभागसहित मुलुकभरका जिल्ला कृषि विकास कार्यालयलाई पत्राचार गर्दै गाविसदेखि नगरपालिकासम्म भएका सम्पूर्ण बाँझो जग्गाको लगत लिन थालेको छ । जग्गाधनी आफैले बाँझो जग्गा उपयोग गरेमा साना सिँचाइ, मल, बीउलगायत सुविधा दिइने छ । संसदको कृषि तथा जलस्रोत समितिले उत्पादन वृद्धि गर्ने कार्यक्रम तय गरी राहातको अनुदान बजेट लक्षित समुदायसम्म पुग्ने सुनिश्चिता गर्न निर्देशन दिँदै आएको छ ।

# पोखरा-कार्किनेटा-सेतीवेनी सडकको ट्र्याक खुल्यो

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा ५ वैशाख ।**

पोखराबाट पर्वत, स्याङ्जा र गुल्मीको सीमानामा रहेको विश्वकै ठूलो शालिग्राम शिला अवस्थित दक्षिण पर्वतको शालिग्राम गाविस जोड्ने सडकको ट्र्याक खुलेको छ । पोखराको पामे हुँदै भदौरे, चित्रे, राम्जा-आर्थर-कार्कीनेटा-लुंखुदेउराली-सेतीवेणी सडकको ट्र्याक शुक्रबारदेखि खुलेको छ । पर्वत जिल्लाका प्रसिद्ध पर्यटकीय क्षेत्रलाई जोड्ने र दक्षिण पर्वतसँगै गुल्मीलाई पोखरासँग जोड्ने सबैभन्दा छोटो र पर्यटकीय सम्भावना बाकेको सडक सञ्चालनमा आएको हो ।

पर्वत जिल्लाको पर्यटकीय गाउँ प्रसिद्ध धार्मिकस्थल पञ्चासेको काखमा रहेको चित्रे, राम्जा र आर्थर तथा डहरे देउराली, विश्वकै ठूलो महाशिला रहेको लुंखुदेउराली, फलामखानी, गार्लाङको लेक, पैंयुकोट दरबार हुँदै विश्वकै ठूलो शालिग्राम शिलालाई छुने सडक पर्यटकीय दृष्टिकोणले महत्वपूर्ण मानिएको छ । बाटो खुलेसँगै एउटै यात्रामा दर्जनौं प्रसिद्ध पर्यटकीय क्षेत्र, कला संस्कृतिको अध्ययन तथा अवलोकन गर्न सहज हुने भएको छ । पोखरा भित्रिने आन्तरिक तथा बाह्य पर्यटकको बसाइँ र उनीहरुलाई नयाँ क्षेत्रको भ्रमण तथा अवलोकन गराउन उक्त सडक प्रयोग हुने भएको छ ।

झन्डै ८० किमी लामो उक्त सडकमा कुनै खोलानाला नपर्ने र पुल निर्माणसमेत गर्न नपर्ने भएकाले कम खर्चमा बाह्रैमास यातायातका साधन सञ्चालन गर्ने गरी सडकको ट्र्याक खुलाइएको हो । सडकको ट्र्याक खुलेसँगै पोखरामा आउने पर्यटक होमस्टेको अध्ययन र अवलोकन तथा पञ्चासे बाट सूर्योदयसँगै सुनाखरीलगायत जडीबुटीको अध्ययनका लागि आर्थर गाविससम्म जान सक्छन् ।

उक्त सडकबाट सबैभन्दा बढी दक्षिण पर्वतका एक दर्जन र छिमेकी जिल्ला गुल्मीका एक दर्जनभन्दा बढी गाविस प्रत्यक्ष रुपमा लाभान्वित हुने भएका छन् । सदरमुकामबाट पिछडिएका उक्त क्षेत्रका बासिन्दाको अब पोखरासँग सिधै सम्पर्क हुने भएको छ । अहिले झन्डै छ/छ घन्टाको यात्रा र हजारौं रुपैयाँ खर्चेर पोखरा आउन बाध्य यहाँका जनतालाई अब सुविस्ता हुनेछ ।

साथै, उक्त क्षेत्रमा उत्पादित तरकारी, फलफूल तथा खाद्यान्न सहज रुपमा बजारमा ल्याउनसमेत सकिने भएको छ । उक्त सडकको शुक्रबार नेकपा (एमाले) का पोलिटब्युरो सदस्य तथा धौलागिरि इन्चार्ज गणेश तिमिल्सिनाले उघाटन गरेका हुन् । सडक खुलेसँगै चित्रे, आर्थर र राम्जाबाट केही दिनमै पोखरासम्म सिधा यातायात सेवा सञ्चालन गर्ने स्थानीयवासीले बताएका छन् । चालु आवमा रु २८ लाख विनियोजन भएको थियो । उक्त रकमले भदौरेदेखि चित्रे सम्मको नयाँ ट्र्याक खोलिएको हो ।

# नयाँ बजारमा पहिलो पाईला मण्टेश्वरी संचालन

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा ५ वैशाख ।**

पोखराको नयाँ बजारमा पहिलो पाईला मण्टेश्वरी स्कुल सञ्चालनमा आएको छ । पहिलो पाईला मण्टेश्वरी स्कुलको शनिबार एक कार्यक्रमको बीच प्रमुख अतिथि हनोरी क्याप्टेन चन्द्र बहादुर गुरुङले उद्घाटन गरेका छन् ।

मण्टेश्वरी स्कुलको उद्घाटन गर्दै गुरुङले समयको माग अनुसार अब मण्टेश्वरी शिक्षा अनिवार्य भएको भन्दै मण्टेश्वरी बिनाको शिक्षा अधुरै हुने बताए । जग बलियो भयो भने घर बलियो हुन्छ भने जस्तै आफ्ना बाल बच्चाको भविश्य राम्रो बनाउनका लागी पनि अब मन्टेश्वरी शिक्षा आवश्यक भएको गुरुङको भनाई थियो ।

कार्यक्रममा स्कुलका प्रिन्सिपल सुबिना गुरुङले साना बाबु नानिको सफल भविश्यका लागि मण्टेश्वरी स्कुलको आवश्यकता हुने भएकोले आफुहरुले पारिवारिक बातावरणमा मण्टेश्वरी शिक्षा प्रदान गर्ने उद्देश्यले पहिलो पाईला सञ्चालनमा ल्याएको बताईन् । करिब ३५ लाखको लागतमा संञ्चालनमा ल्याईएको पहिलो पाईला मण्टेश्वरीमा ८० जना सम्म बच्चा बच्ची राख्न सक्ने क्षमता रहेको प्रिन्सिपल गुरुङले जानकारी दिईन् । मण्टेश्वरीमा सुबिना गुरुङको एकल लगानी रहेको छ ।

# समाजिक समावेशिकरण सम्वन्धी परामर्श

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा ५ वैशाख ।**

मानव अधिकार वातावरण तथा विकास प्रतिष्ठान इन्हुरेड इन्टरनेशनलको आयोजनामा आइतवार पोखरामा जिल्ला स्तरिय परामर्श गोष्ठी सम्पन्न भएको छ । लैगिक शसक्तिकरण तथा समाजिक समावेसिकरण सम्वन्धी परामर्श कार्यक्रम सम्पन्न भएको हो । कार्यक्रममा वोल्ने वक्ताहरुले कानुन जतिसुकै वलियो वनेपनि सोचमा परिवर्तन आउनुपर्ने आवश्यकता औल्याए । लैंगिक विभेद अत्य गर्नका लागि सामाजिक सचेतना आवश्यक रहेको भन्दै आआफ्नो स्थानवाट सवैले भूमिका खेल्नुपर्नेमा जोड दिए । इन्हुरेट इन्टरनेशनले एसिया फाउण्डेशनको सहयोगमा भदौरे तामागी र चापाकोटमा परियोजना संचालन गर्न लागेको सृजना शर्माले जानकारी दिइन् । कार्यक्रममा अधिवक्ता सरला कुमारी पाण्डेले लैगिंक सशक्तिकरण तथा सामाजिक समावेशिकरणका सवालमा विद्यमान कानुन तथा नीतिहरुको सवल पक्ष तथा चुनौती र समाधानको उपायका विषयमा प्रस्तुति राखेकी थिइन् ।

कार्यक्रममा सह क्षेत्रिय प्रशासन दिवाकर वास्तोला, जिल्ला प्रशासन कार्यालय कास्कीका प्रशासकिय अधिकृत अनिल शाही, जिल्ला शिक्षा कार्यालयका सहायक जिल्ला शिक्षा अधिकारी हेमनारायण चापागाई, पोखरा उपमहानगर पालीकाका वरिष्ठ अधिकृत ओमराज पौडेल,महिला तथा वालवालिका कार्यालय विन्दु भण्डारी लगायतले एनजिओ आइएन्जीले संचालन गर्ने परियोजना तथा कार्यक्रमहरुलाई सरकारी निकायले समन्वयात्मक भूमिका खेल्नुपर्नेमा जोड दिदै सहयोग गर्ने प्रतिवद्धता व्यक्त गरे ।

कार्यक्रममा मानवअधिकारकर्मी टेकनाथ वराल, अधिकारकर्मी विष्णुप्रसाद वराल, अधिवक्ता जनकल्याण पराजुली, अधिवक्ता सुरेन्द्र थापामगर, अधिवक्ता जुना कुमारी गुरुङ, पत्रकार दिपक परियार, मानव मिलन नारी जागरणका अध्यक्ष पार्वती पौडेल, एकल महिला समुह कास्कीका मनमाया नेपाली, चापाकोटका गाविस सचिव युवराज पौडेल, चापाकोट गाविसका सचिव दान वहादुर जिसी, वाल तथा महिला शसक्तिकरण समाजका अध्यक्ष सीता भट्टराई, जिवीस सानि परियोजनाका माया गुरुङ, कोपिला नेपालका विना सिलवाल, विश्वराज पौडेल, विष्णुप्रसाद भण्डारी, दुर्गादेवी वास्तोला लगायतले वोलेका थिए । कार्यक्रमको सहजिकरण नेपाल पत्रकार महासंघका केन्द्रीय सदस्य तथा कार्यक्रमको जिल्ला संयोजक सुष्मा पौडेलले गरेकी थिइन् ।

# शुभकामना आदान-प्रदान

**पोखरा ५ वैशाख ।**

अखिल नेपाल राष्ट्रिय स्वतन्त्र विद्यार्थी युनियन (अनेरास्ववियु) क्षेत्र नं. ३ को आयोजनामा नव बर्ष २०७३ सालको अवसरमा आइतबार शुभकामना आदानप्रदान कार्यक्रम सम्पन्न गरेको छ । सो अवसरमा प्रमूख अतिथि अनेरास्ववियु केन्द्रिय कमिटी सदस्य आशिर्वाद सुवेदीले अहिलेको बर्ष भरी अनेरास्ववियुले शैक्षिक, सामाजिक र राजनैतिक कार्यलाई अगाडि बढाउने बताए । क्षेत्र नं. ३ का क्षेत्रीय संयोजक महेन्द्र पौडेलले संस्था भित्र गुटबन्दीले प्रसय पाएकोमा दुःख व्यक्त गर्दै व्यक्ति भन्दा संस्थागत बिकासको आबश्यकता रहेको बताए । सो कार्यक्रममा बिशेष अतिथि अनेरास्ववियु क्याम्पस जिल्ला कमिटी अध्यक्ष विवेक देवकोटा, राष्ट्रिय परिषद सदस्य क्षितिज पौडेल, अनेरास्ववियु भूगोल जिल्ला कमिटी उपाध्यक्ष लक्ष्मण तिमिल्सिना, सचिव राजेन्द्र बसैला, पुर्व विद्यार्थी नेता कुमार लामा, स्वतन्त्र पत्रकार संघ कास्कीका सचिव कृष्ण रानाभाट लगाएतले शुभकामना व्यक्त गरेका थिए । क्षेत्रीय संयोजक महेन्द्र पौडेलको अध्यक्षतामा भएको कार्यक्रममा स्वागत बासना थापाले र संचालन सन्तोष पोखरेलले गरेका थिए ।

# रूद्रबहादुर हितानमगरलाई बधाई ज्ञापन

**पोखरा ५ वैशाख ।**

नेपाल मगर पत्रकार संघ कास्कीका अध्यक्ष रूद्रबहादुर हितानमगर मगर आदिकवि जीतबहादुर सिंजालीमगर साहित्य प्रतिष्ठानद्वारा हरेक वर्ष प्रदान गरिने जीबसिम साहित्य पुरस्कार-२०७१ बाट सम्मानित भएकोमा संघको कास्की शाखाले बधाई ज्ञापनसहित सम्मान गरेको छ । आइतबार आयोजित कार्यक्रममा नेपाल मगर संघ कास्कीका कोषाध्यक्ष कुमार थापामगरले अध्यक्ष हितानमगरलाई सम्मान गरेका हुन्। सोही अवसरमा थापामगरले संघको प्रथम राष्ट्रिय सम्मेलनमार्फत् कास्कीबाट केन्द्रीय उपाध्यक्ष, उपमहासचिव तथा सचिव पदमा निर्वाचित क्रमशः एमबी आस्था मगर, रूद्रबहादुर श्रीसमगर र मनोज घर्तीमगरलाई समेत मगर पत्रकार संघ कास्कीका तर्फबाट सम्मान गरेका थिए । सो अवसरमा बोल्दै नेपाल मगर संघ कास्कीका कोषाध्यक्ष कुमार थापामगरले मगर जातिको पहिचानलाई स्थापित गराउन मगर पत्रकार एवं सञ्चारकर्मीहरूको महत्वपूर्ण भूमिका हुने उल्लेख गरे । आवाजविहीनहरूको आवाजलाई स्थापित गराउन मगर पत्रकारहरूले निरन्तर कलम चलाउनुपर्नेमा जोड दिँदै थापामगरले नेपाल मगर संघको आसन्न ११ औं राष्ट्रिय महाधिवेशनको प्रचार-प्रसारमा समेत सहयोग गर्न आग्रह गरे । यसैबीच, नेपाल मगर पत्रकार संघ कास्की शाखाले यही वैशाख २५ गते कास्की जिल्लास्तरीय बृहत मगर पत्रकार भेला, वनभोज तथा प्लास्टिकजन्य सामग्रीले वातावरणमा पार्ने प्रभावबारे एक दिने अन्तरक्रिया कार्यक्रम गर्ने भएको छ ।

# सुनचाँदी व्यवसायीबीच शुभकामना

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा ५ वैशाख ।**

कास्कीका प्रहरी प्रमुख घनश्याम अर्यालले सुरक्षा मामिलामा आफूले कुनै सम्झौता नगर्ने बताएका छन्। सुन चाँदी व्यवसायी संघ कास्कीले शनिबार आयोजना गरेको शुभकामना आदान-प्रदान तथा क्यालेन्डर विमोचन कार्यक्रममा उनले यस्तो बताएका हुन्। संघले कार्यक्रममा अर्याललाई स्वागत पनि गरेको थियो। अर्यालले भने-'गल्ती गर्ने कसैलाई छाड्दिन। आफ्नै छोरो भए पनि सम्झौता हुन्न।' प्रहरी प्रमुख अर्यालले सुरक्षा व्यवस्था चुस्त बनाउन नेपाल प्रहरी प्रतिबद्ध रहेको बताए। उनले भने-'तपाईहरू ढुक्क भएर व्यापार गर्नुस्, सुरक्षाको जिम्मा म लिन्छु।' उनले प्रहरी मात्रले सुरक्षाको जिम्मेवारी लिन नसक्ने बताउँदै नागरिकले नै विना वर्दीका प्रहरीको भूमिका निर्वाह गरी सहयोग गर्नुपर्ने बताए।

संघका सचिव निर्मल दियाली सुनारले सुन चाँदी व्यवसायमा जोखिम बढी हुने भएकाले सुरक्षा व्यवस्था चुस्त बनाउन आग्रह गरे। संघ कास्की अध्यक्ष चन्द्रकिशोर गौतमको अध्यक्षतामा भएको कार्यक्रममा सल्लाहकारहरू दुर्गाबहादुर सुनार र कृष्णमान गुभाजु, महासंघका सदस्य दुर्गामान बुद्धाचार्य, उपाध्यक्ष राजेशमान बुद्धाचार्यलगायतले बोलेका थिए।

# हेमजा युनाईटेड पहेलो फाईनलमा

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा ५ वैशाख ।**

हेमजा युनाईटेड पोखरा-२९ हेमजाले आयोजना गरेको शुभकामना कपमा सत्य युवा क्लव र आयोजक हेमजा युनाईटेड पहेलो फाईनलमा प्रवेश गरेका छन्। आईतबार भएको पहिलो सेमिफाईनल खेलमा सत्य युवा क्लव बाफ्ापाटनले आयोजक हेमजा युनाईटेड निलोलाई ६-० को फराकिलो गोल अन्तरले पराजित गऱ्यो।

प्रतियोगितामा सत्य युवा क्लवका जर्सी नं २३ का शिव सुवेदीले तीन, जर्सी नं.७ का ध्रुव घिमिरे र जर्सी नं. ११ का हेमन्त थापा मगरले एक एक गोल गरेका थिए। आयोजक हेमजा युनाईटेड निलोबाट भने कुनै गोल हुन सकेन्। प्रतियोगितामा सत्य युवा क्लवका तर्फबाट जर्सी २३ का शिव सुवेदी म्यान अफ दी म्याच घोषित भए।

प्रतियोतिाको दोस्रो प्रतियोगितामा आयोजक हेमजा युनाईटड पहेलोले विष्णु पादुका क्लव पहेलोलाई २-० ले पराजित गऱ्यो। प्रतियोगितामा म्याद अफ दि म्याचको ट्रफी वडा प्रहरी कार्याल बगरका प्रमुख प्रहरी निरीक्षक मोहनबहादुर खाँण र हेमजा युनाईटेडका अध्यक्ष ईन्द्रप्रसाद त्रिपाठीले वितरण गरेका थिए।

बैशाख ७ गते १ बजे आयोज हेमजा यनाईटेड पहेलो र सत्य युवा क्लव वाफ्ापाटन बीच फाईन खेल हुने कोषाध्यक्ष ईन्द्रबहादुर कुँवरले जानकारी दिए । युवा एकता र विकासका लागि खेलकुद भन्ने मूल नाराका साथ आयोजना गर्न लागिएको प्रतियोगिता गौरी शंकर खेल मैदान गैरीमा चल्ने छ। प्रतियोगितामा १२ टिमको सहभागि रहेको छ।

खेलकुदको माध्यमबाट कुलतमा फसेका साथै वेरोजगार युवा युवतीहरुलाई विकृति र विसङ्गतिबाट जोगाई सहि बाटो देखाउनका लागि टेवा पुऱ्याउने उद्देश्यले प्रतियोगिताको आयोजना गरिएको हो । प्रतियोगितामा प्रथम हुनेलाई एक लाख ११ हजार एक सय ११, दोस्रा हुनेलाई ६१ हजार एक सय ११, कप मेडल ट्रफि र प्रमाण पत्र प्रदान गरिने हेमजा युनाईटेडका सहसचिव खिमलाल तिमिल्सिनाले जानकारी दिए ।

# फुल कन्ट्याक्ट कराँते प्रतियोगित शुरु

**पोखरा ५ वैशाख ।**

कास्कीको लेखनाथमा आइतबार देखि पश्चिमाञ्चल क्षेत्रिय पुरुष तथा महिला फुल कन्ट्याक्ट कराँते प्रतियोगित शुरु भएको छ । प्रतियोगिताको एक समारोहका बीच पशिचमाञ्चल क्षेत्रीय प्रशासक शंकर प्रसाद कोईरालाले उद्घाटन गर्दै खेल पर्यटनका माध्यमले लेखनाथलाई चिनाउन खेल मैदान निर्माणका लागि आफूले सक्दो सहयोग गर्ने प्रतिवद्धता व्यक्त गरे । जीवनमा अनुशासन कायम राख्न खेलकुदले महत्वपूर्ण भूमिका खेल्ने हुँदा अभिभावकको हौसला र प्रेरणाले खेलाडीलाई थप बल पुग्ने धारणा राख्दै कोइरालालेअन्राष्टिय प्रतियोगिताहरु जित्न यस्ता प्रतियोगिताहरुले मार्ग प्रशस्त गर्ने बताए । सगरमाथा टेलिभिजनका अध्यक्ष निर्मल गुरुङले खेलाडीहरु राष्टका गहना भएकोले उनीहरुलाई उत्साह थप्नु पर्ने बताए । कार्यक्रममा आफ्नो मन्तव्य राख्दै पोखरा उपत्यका नगर विकास समितिका अध्यक्ष प्रकाश मोहन खनालले शहरोन्मुख रिठेपानी जस्ता ठाउँमा आयोजना गरिने खेलहरुले यि ठाउँका जनताको खेल प्रतिको सोच र विचारको प्रतिनिधित्व गरेको बताए । लेखनाथ नगरपालिकाका कार्यकारी अधिकृत लोक बहादुर भण्डारीले खेल संगित र राजनिति मानिसको छिट्टै मन तान्न सक्ने माध्यम भएको बताए । नेपाल क्योकुशिन बुदोकाई कराँते संघ, लेखनाथको आयोजना, राइजिङस्टार यूथ क्लब र लिटल फलावर एजुकेशनल एकेडेमीको सह-आयोजना, रिठेपानीमा अवस्थित आमा समूहहरु त्था टोल विकास संस्थाहरुको व्यवस्थापनमा सुरु भएको कराँते प्रतियोगितामा पश्चिमाञ्चलका विभिन्न १२ जिल्ला सहित काठमाडौं , धनुषा र सर्लाहीका खेलाडीहरुको समेत गरी नौ तौल समूह रहेका छन् ।

# २९ वटै वडामा प्लाष्टिक मुक्त

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा ५ वैशाख ।**

पोखरा उपमहानगरपालिकाले २९ वटै वडालाई प्लाष्टिक फ्ोला र गिलास निषेध क्षेत्र घोषणा गरेको छ । गत फागुनबाट सुरु भएको अभियान अर्न्तगत आज पोखरा १६ लाई प्लाष्टिक फ्ोला र गिलास मुक्त क्षेत्र घोषणा गरेसँगै सबै वडाहरुमा अभियान सम्पन्न भएको छ । यो सँगै अब पोखरालाई नै प्लाष्टिक फ्ोला र गिलास निषेध शहर घोषणा गर्ने बाटो खुलेको छ । आज बाटुलेचौरमा आयोजित कार्यक्रममा अभियानका संयोजक एंव वरिष्ठ अधिकृत बसन्त चालिसेले पोखरा १६ लाई प्लाष्टिक फ्ोला र गिलास निषेध वडा घोषणा गरेका थिए । कार्यक्रममा उनले जनस्वास्थ्यलाई प्रत्यक्ष प्रभाव पार्ने प्लाष्टिकलाई निषेध गर्नु नागरिकको कर्तव्य भएको बताए । उनले आफूहरुको अभियानमा पोखरावासीले गरेको सहयोग प्रति खुसी व्यक्त गरे ।

वडा सचिव एकबहादुर बस्नेतको अध्यक्षतामा भएको कार्यक्रममा इन्जिनियर महेन्द्र गोदार, वातावरण शाखाका अधिकृत निर्मलमान सिंह भण्डारी, वडा नागरिक मञ्चका संयोजक कृष्णप्रसाद अधिकारी, एकल महिला समूहका अध्यक्ष दुर्गा केसी, एमालेका सुवासबाबु अधिकारी, काँग्रेसका होमबहादुर वानिया, एकीकृत माओवादीका गुरुदत्त भट्टराई, नेकपा माओवादीका चक्रपाणि सुवेदी, राप्रपा नेपालका नन्दलाल शर्मा, बालमञ्चका सरस्वती पुडासैनी, टोल विकास संस्थाका पुष्पराज तिमिल्सिना लगायतले घोषणा सँगसँगै प्रभावकारी अनुगमन हुनुपर्नेमा जोड दिएका छन् । सोही अवसरमा लायन्स क्लब अफ पोखरा केभ सिटीले कपडाको फ्ोला वितरण गरेको छ । क्लबका अधयक्ष दानबहादुर बानियाँले फ्ोला वितरणका लागि प्रमुख अतिथि चालिसेलाई हस्तान्तरण गरे ।

# पोखरामा पारिजातको स्मरण

**गोल्डेन न्यूज संवाददाता**
**पोखरा ५ वैशाख ।**

पोखरेली युवा साँस्कृतिक परिवारले प्रत्येक महिनाको पहिलो शनिबार सञ्चालन गर्दै आएको समता काव्य सन्ध्याको २७४ औं शृङ्खला साहित्यकार पारिजातलाई स्मरण गरी शनिबार पोखरामा सम्पन्न भयो । २३ औं पारिजात स्मृति दिवसका सन्दर्भमा कार्यक्रमका प्रमुख अतिथि नेपाल संगीत तथा नाट्य प्रज्ञा प्रतिष्ठानका कुलपति सरुभक्तले ४० को दशकमा विश्वविद्यालय पढ्दा पारिजातसंग भेटघाट र कुराकानी भए पनि गहन अध्ययन गरेरै उनलाई चिनेको बताए । समयले उनलाई के दियो भन्दा पनि उनले समयलाई सुन्दर उपहार दिएकी हुँदा अहिलेको पुस्ताले पारिजातलाई उत्तरआधुनिक शैलीमा पढ्न आश्यक भएको जनाए ।

गोष्ठीमा कविबर तेजनाथ घिमिरेले कविता अभिव्यक्तिको माध्यम भएकाले खाङ्ग्रेमा पतकरको थुप्रो लगाउनु भन्दा एक मुठो पातले सुन्दर टपरी बनाए जस्तै थोरैमा धेरै भन्न सक्नु नै कविताको शक्ति भएको बताए । स्रष्टाहरु सिर्जनशील र क्रियाशील भए कविता आफै बलशाली हुन्छ भने । नयाँ वर्षको शुभकामना आदान-प्रदानसँगै कुलपति सरुभक्त, कविवर तेजनाथ घिमिरे, डा. चैतन्य अधिकारी, लक्ष्मण थापा, अमृत सुवेदी गुराँस, नारायणप्रसाद गौतम, सुरज उपाध्याय, विष्णुप्रसाद वाँस्तोला, बसन्त विनोद, सुमन लम्साल, छविलाल आचार्य, रामलाल बाटाजू, कृष्ण अधिकारी त्रुपक, अस्मित सुनार, गोविन्दप्रसाद पराजुली, क्रिष्टिना गुरुङ, विष्णुप्रसाद पराजुली, संगीता पौडेल, सन्दिप गौतम, कोशिस ओफ्ा, भरत कोइराला, सुदर्शन पौडेल, रामकुमार श्रेष्ठ, र विवश थापा लगायतका कविहरुले आफ्ना सिर्जनाहरु वाचन गरेका थिए ।

परिवारका साहित्य संयोजक प्रकाश ज्ञवालीले स्वागत मन्तवसहित विशेष रचना अन्तर्गत पारिजातको "नजरबन्द आँखाहरु" कवितालाई प्रस्तुत गरेका थिए । संस्थाका अध्यक्ष सुरेश रानाभाटको अध्यक्षतामा सम्पन्न उक्त कार्यक्रमको सञ्चालन सचिव अर्जुन अधिकारीले गरेका थिए ।









सुनौलो पब्लिकेशन प्रा.लि.द्वारा प्रकाशित गोल्डेन न्यूज राष्ट्रिय दैनिकका लागि अध्यक्ष प्रधान सम्पादक **गंगाधर पराजुली**, निर्देशक **हरिमणि बराल**, संस्थापक सम्पादक **रीता गुरुङ**
कार्यालय : चिप्लेढुंगा (सुनौलो भवन), पोखरा, फोन:०६१-५३९४५५, फ्याक्स : ५२२२२२, Email : goldennewspkr@gmail.com, Website: www.goldennews.com.np, मुद्रण **गोल्डेन अफसेट प्रेस**, चिप्लेढुंगा, पोखरा